# सज्जन

नेपाल…नेपाल कुनै समयमा हिन्दू धर्मावलम्बीहरुको बास स्थान थियो भने समयको गतिसँगै यो देशमा अरु धर्म पनि भित्रिए। हिन्दू धर्मले दिएको जात प्रथा पनि कायम नै रहेको थियो । २१औं शताब्दी लागे पनि मानसिकता भने त्यही जङ्गली युगको नै थियो । जति नै विज्ञानको विकास भए पनि अन्धभक्त, अक्कडो र मूर्ख प्रवृत्तिका मान्छे भने छँदै थिए।

करिब पाँच फुट तीन इन्च जति कद भएका, कृष्ण वर्णका मोटा मोटा व्यक्ति थिए। गलामा तुलसी तथा रुद्र माला लगाएका एक सज्जन थिए । परिवारमा छोराछोरी र श्रीमती सबैले भरिएका सज्जन पेशाले पण्डित थिए । बिहान बिहानै पूजा गर्ने बानी थियो त्यसैले उनको निधार भरीको एउटा लामो टीका हुन्थ्यो भने उनले आफ्नो घाँटीमा समेत लगाएका थिए टीका। आफूले आफैलाई धर्मको ज्ञानी मान्थे ।

परिवारमामा ऊ एक मात्र कमाउने व्यक्ति थिए त्यसैले निरङ्कुश शासन, पितृसत्तात्मक प्रवृत्ति र आर्थिक अभावका कारण झेल्नुपर्ने बाध्यता त थियो नै । यिनले आफ्ना छोरा छोरी सबैलाई विद्यालयीय शिक्षा भने दिएका थिए र छोरीहरुलाई विवाहको लागि भने त्यसरी जबर्जस्ती गरेका थिएनन् । यिनले आफ्नो जीवनको जवानीमा श्रीमती हुँदा पनि अर्किसंग लाग्ने, श्रीमतीलाई मारेर कुट्ने र छोरा पाउने इच्छा जस्ता एक पुरुषले गर्ने काम समाजलाई देखाएर आफ्नो पुरुषार्थ सिद्ध गरेका थिए ।

आज सोमबारको दिन ती सज्जन व्रत लिने गर्थे । व्रतको लागि उनी नुहाउन थाले तर उनको लङ्गोटी भने भेटिएन अनि त के उनले सुरु गरे मन्त्र भन्न । मन्त्रमा उनले श्रीमतीलाई राँडी,रण्डी अनि अरू अश्लील शब्दहरुको प्रयोग गरे… भने अरुलाई पनि छोडेनन् अनि पछि जसोतसो उनको लाङ्गोटी भेटियो र त्यो पाएको एकछिन पछि नुहाउदै गरेको ठाउँबाट आवाज आयो, “हरे राम हरे राम राम राम हरे….।”

सज्जन अब नुहाएर पूजा गर्न पूजाकोठातिर गए । एकछिन पछि फेरि त्यस्तै अश्लील मन्त्रका आवाज आउँदै थाले । गएर हेर्दा रातो अबिर तल भुइँमा छरिएछ र फेरि ती सज्जन यत्रायत्रा स्वरले रिसाउँदै भन्न थाले, “मैले त बिस्तारै खन्याको थिएँ तर यो राँडीको चिहान आफैं यत्ति झरेर पोखियो।” आफैं…आफैं कसरी झर्छ त्यो प्याकेटको अबिर तर त्यो कुरा हाम्रा सज्जनलाई कल्ले भन्दिने..?

यति सक्किएर ऊनी पूजा त गर्न बसे तर बाल्नका लागि न सलाई भेट न लाइटर । त उनी पूजाकोठाबाट श्रीमती र छोरालाई आवाज लगाउन थाले, “लाइटर पनि छैन यो घरमा अब । खै त्यो राँडीलाई लाइटर मागेको ल्याइन त ..।” अनि झन् ठूलो ठूलो स्वरले “ जाबो एउटा लाइटर नि छैन है । सब्बै मैले नै किनेर ल्याएर ठिक्क पर्दिनु पर्ने तिमीहरू राँडीका पिशाचहरुलाई ।” यस्तै नाना थरी भन्दै बसे र एकछिनमा लाइटर लिएर दिएपछि ऊनी दियो बल्दै भन्न थाल्छन्, “ॐ शुभ भवतु कल्याणं…..”